# साल्पा पोखरी

## भोजपुर

### संरक्षणमा धर्म, संस्कृति र परम्पराको महत्व



जनवरी २००७



तयार गर्ने : डब्लु डब्लु एफ नेपाल / कमल कुमार साम्पाङ्ग (राई)
तस्विर : डब्लु डब्लु एफ नेपाल / कमल कुमार साम्पाङ्ग (राई)
सम्पादन : झमक बहादुर कार्की (राष्ट्रिय निकुञ्ज तथा वन्यजन्तु संरक्षण विभाग)
एलिजा स्थापित (डब्लु डब्लु एफ नेपाल)



## राष्ट्रिय प्रतिनिधिको सन्देश

सिमसार पारिस्थितिक प्रणालीको एक महत्वपूर्ण अंग हो । सिमसारले पानीको भण्डारण र स्वच्छीकरण गर्ने, स्थानिय वासिन्दाहरुलाई विभिन्न प्रकारका श्रोत उपलब्ध गराउने, विभिन्न दुर्लभ वन्यजन्तु एवं वनस्पतिलाई वासस्थान प्रदान गर्ने र धार्मिक, सांस्कृतिक, ऐतिहासिक तथा पर्यटकिय स्थलको रुपमा अतुलनिय भूमिका निर्वाह गरेको हुन्छ ।

नेपाल अनेकौं महत्वपूर्ण सिमसारको धनी राष्ट्र भएता पनि अझै यी सिमसारहरुको खोज र महत्वको विश्लेषण हुन बाँकी नै रहेको छ । तराईको कतिपय सिमसारको सर्वेक्षण तथा अनुसन्धान भई दस्तावेजहरु तयार भैसकेको छ, तर पहाडी क्षेत्रमा अवस्थित धेरै जसो सिमसारहरुको अवस्थाबारे हामी अनभिज्ञ छौं । यही जानकारीको कमिलाई परिपूर्ति गर्न डब्लु डब्लु एफ नेपालको स्वच्छ जल सम्पदा कार्यक्रम अग्रसर भएको छ ।

स्वच्छ जल सम्पदा कायक्रमले हाल उच्च हिमाली क्षेत्रमा रहेका सिमसारहरुको विवरण तयार गर्ने क्रम अगाडी बढाएको छ । यसै सन्दर्भमा प्रस्तुत पुस्तिकाले परम्परागत रुपले जीवन यापन गर्दै आएका आदिवासी जनजातीहरुले धार्मिक, ऐतिहासिक र सांस्कृतिक आस्था एवं विश्वासका आधारमा ती क्षेत्रका संरक्षण तथा उपयोग गरेको जिवन्त उदाहरणहरु प्रस्तुत गरेको छ ।

यो अनुसन्धान अगाडी बढाउन प्राविधिक रुपले सहयोग गरिदिनु भएकोमा राष्ट्रिय निकुञ्ज तथा वन्यजन्तु संरक्षण विभाग र आर्थिक सहयोग गरिदिनु भएकोमा डब्लु डब्लु एफ नेदरल्याण्ड्स/डब्लु डब्लु एफ ईन्टरनेशनल र डब्लु डब्लु एफ युके प्रति डब्लु डब्लु एफ नेपाल हार्दिक कृतज्ञता ज्ञापन गर्दछ ।

अन्त्यमा यस किसिमको विवरण संकलन र सो को प्रकाशनबाट अन्य क्षेत्रका सिमसारहरुको संरक्षण, सम्बर्धन र वुद्धिमत्ता उपयोग गर्न सघाउ पुर्‍याउने छ भन्ने मैले अपेक्षा गरेको छु ।

Manandhar

अनिल मानन्धर
राष्ट्रिय प्रतिनिधि
डब्लु डब्लु एफ नेपाल

नेपालको पूर्व कोशी अञ्चल, भोजपुर जिल्ला अन्तर्गत फेदी, दोभाने गा.वि.स. वार्ड नं.८ मा पर्ने अति धार्मिक र ऐतिहासिक महत्व संगालेको साल्पा पोखरी समुद्र सतहबाट ३,४४३ मी को उचाईमा रहेको छ । कचौँरा आकारमा चारैतिर पहाडले घेरिएको साल्पा पोखरीलाई किराँतीहरुले साली-पाः "सबैभन्दा उच्च स्थानमा रहेको पुर्ख्यौली भग्वान" भनी सम्बोधन गर्ने गरेको पाईन्छ । हिमाली क्षेत्रमा पाईने जैविक विविधताले पूर्ण साल्पा पोखरी हरेक सुख, दुःखमा साथ दिने आस्थाको प्रतिक भई विभिन्न समुदायमा रहेको पाईंदो रहेछ ।



## जनसंख्या तथा व्यवसाय

वि.सं. २०५८ को जनगणना अनुसार भोजपुर जिल्लाको जनसंख्या २,०३,०१८ छ जसमा १,०९,१५३ हिन्दु, २८,७२४ बौद्ध, ६४,३२३ किराँत, ५५ ईस्लाम, ४४१ क्रिष्चियन, ४४ शीख, ५ जैन र बहाई र २७१ अन्य धर्म मान्ने जनजातिहरु बसोवास गर्दा रहेछन् । यहाँको जनताको मुख्य व्यवसाय कृषि र पशुपालन हुन् ।

## सीमसारसंग सम्बन्धित स्रोतहरु

प्राकृतिक सुन्दरताले धनी भोजपुर जिल्ला अरुण, सुनकोशी लगायत सङखुवा, पिखुवा, चिरखुवा, बोखीम अँडुवा गरी साना ठूला प्रसिद्ध नदीहरुले सुसज्जित छन् । अरुण नदीको किनारमा भएको जैविक विविधताको लागि अमूल्य सीमसारको रुपमा रहेको पाईन्छ ।

साल्पा पोखरी, काला पोखरी, हन्सा पोखरी, पञ्चकन्या पोखरी, छागा (चिर्खुवा खोलामा), तीन छांगा जुगे (वोखिम खोलामा) सीमसार क्षेत्रहरु हुन । फेदी गा.वि.स.मा सहभागीमूलक अध्ययन अनुसन्धान गर्दा छुट्टाइएका साल्पा पोखरी परिसरमा पर्ने बिल्बाटे पोखरी, सुकेबार पोखरी जस्ता सीमसार क्षेत्रहरु र वेता खोला, दोखामबोटा, कुसुङ्गवा, मोरोहङ्गवा, सोयाङ्गसेवा, साल्पावा, सीलीचाङ्गवा आदि खोला खोल्सीहरु अरुण नदीसंग मिसिन गई सप्तकोशीमा मिलन हुन जान्छ ।

## साल्पा पोखरीको ऐतिहासिक, धार्मिक र साँस्कृतिक महत्व

साल्पा पोखरीमा अध्ययन गर्न जाने क्रममा विभिन्न बुद्धिजिबी र काठमाडौंमा रहनु भएका महानुभावहरुसंग जिज्ञांसा राखिएको थियो । त्यसैगरी संखुवासभा, खोटाङ्ग आदिका बासिन्दा, पुर्ख्यौली, धामी, पुरेत, शिक्षक र साल्पा पोखरीसंग नजिक भएको व्यक्तिहरुसंग सम्पर्क गरिएको थियो ।



### ७० बर्ष उमेर पार गर्नु भएका एक किरँातवंशी वृद्ध यस पोखरीको ऐतिहासिक दन्त्य कथा सुनाउनु हुन्छ –

आदिम युगमा एक प्रभावशाली राजा हालको संखुवासभा क्षेत्रमा राज गरेको कुरा महादेवले तराई र कैलाश जाने क्रममा देखेका रहेछन् । महादेवलाई उक्त क्षेत्रमा बसी राज गर्न मन भएको हुनाले किरँात राजालाई पिनास जस्ता खतरनाक रोग लगाएर आफु चाहीं औतारी लामाको स्वरुप लिई त्यस क्षेत्रमा तल माथि हिंडिराख्दा रहेछन् । आफ्नो स्वास्थ्य समस्या उक्त लामालाई देखाएपछि ठाउँ सर्नु पर्ने नत्र ज्यान खतरापूर्ण रहने लामाको कथनलाई ध्यानमा राखी किरँात राजा आफ्नो सहयोगी लिएर तराईतर्फ प्रस्थान गर्नु भएछ । लामाको स्वरुप लिएका महादेवले किरँात राज्यलाई ध्वस्त पारी संखुवाखोला उत्पन्न गराई, रानीलाई लखेटेर आफु राज्य गर्न थालेको कुरा राजाले स्वास्थ्य लाभपछि फर्केर आउँदा थाहा पाएछन् । रानीको खोजीमा अलाप–बिलाप गर्दै बर–पिपल, खोला नदी, पोखरी, तलाउ आदिलाई परामर्श लिदैं जाँदा साल्पा क्षेत्रमा किरँात रानी रुँदै गएको खबर पाएपछि राजा उतै आफ्नी रानी खोज्न जानु भएछ ।

रानी हिड्दै जाँदा ठाउँठाउँमा पोखरी, धाप निर्माण भएको केही वर्ष अघिसम्म पैतला आकारको आकृतिमा पानी रहेको कथाहरु सुनिने गरेको छ । राजा त्यसरी संखुवासभाबाट भोजपुरको फेदीको जौवारी तल रहेको अग्लो ढुङ्गामा चढी रानी कहाँ पुगी भनी हेर्दा टाउको मात्र देखेछन् । त्यसपछि त्यसै ठाउँमा अर्को ढुङ्गा राखी हेर्दा साल्पा पोखरीमा रानी देखेछन् । हतास गरी जाँदा किरँात राजाले आफ्नी रानीलाई सर्पले बेरेको अवस्थामा पाएपछि उक्त सर्पलाई मार्न खोज्दा रानीले यसो गर्नु हुन्न, मैले यो नागसंग बिहे गरीसकें तपाई आईपुग्न ढिलो भो, यस नागले तपाईलाई मार्न सक्छ भनिछन् । यो कुखुराको भाले लिएर जानुहोस, जहाँ पुग्दा भाले बास्ला त्यहा नै तपाईको राज्य स्थापना हुनेछ भनी रानीले विदाई गरिछन् । किरँात राजा कुखुराको भाले लिएर ओखलढुङ्गा हुदैं काठमाडौं आईपुग्दा भाले बासेपछि उसको राज्य काठमाडौंमा उदय भएको रहेछ । ईसु क्रिष्ट जन्मनु ६०० वर्ष भन्दा पनि पहिले किरातवंशका ३२ वटा राजाहरुले शिला र प्रकृतिको पूजा गरी राज्य सञ्चालन गरेको इतिहासमा पाईन्छ । त्यस बखतदेखि हामी किरँातीहरु, विशेष गरी धामी, झाँक्री, बिजुवा, नुवगीरे, बिजुएनी, साल्पा पोखरीमा जाने पूजाआजा गर्ने, आर्शिवाद लिने प्रचलन रहेको भनी हाम्रो पुर्ख्यौली बाबु बाजेले मानिराख्नु भएको छ ।

यस मौखिक ऐतिहासिक धार्मिक मान्यताले किरँात समुदायको साल्पा पोखरीसंग रहेको गहिरो छुट्टाउनै नसकिने सम्बन्ध रहेको देखिन्छ । त्यसो त सबै वर्ण जातजाति, धर्म, संस्कृति, सँस्कार मान्ने जनमुदायहरु पनि साल्पा पोखरीलाई धार्मिक तीर्थ स्थलको रुपमा आदर गर्ने परम्परा रहेछ ।

**एक हिन्दु धर्मावलम्बी साल्पा पुग्नुलाई हिन्दु धर्म सँग गाँस्दै भन्नुहुन्छ –**

> **"बाबु जीवनमा सबै मानिस साल्पा जानुपर्ने धर्म शास्त्रमा लेखिएको छ । हामी मरेपछि स्वर्गमा पुग्दा हामीलाई साल्पा गएको छ कि छैन भनी सोधनी हुन्छ रे, गएको छैन भने राम्रो स्थान स्वर्गमा पाउन सकिन्न भन्छन् ।"**

यस्तो रितिरिवाज, सामाजिक, धार्मिक, मान्यताले साल्पा पोखरीको मानव समाजमा अन्योन्याश्रित सम्बन्ध रहेको पुष्टि हुन्छ । साल्पा पोखरी र मानव समाजले अंगिकार गरेको धर्म, सँस्कार, मूल्य मान्यता, रितिरिवाज बारे खोज, अध्ययन, अनुसन्धान गर्ने क्रममा साल्पा पोखरी जाने फेदी गाउँमा बिभिन्न बुद्धिजिवी, स्थानीय शिक्षक, समाजसेवी, बुढापाका, पुर्खा, धामी, झाँक्री, साल्पा संरक्षण समूह, सामुदायिक वन उपभोक्ता सदस्यहरु माझ समूहगत छलफल गरिएको थियो । छलफलमा उहाँहरुले साल्पा पोखरी र यसका वरिपरी रहेका अन्य सीमसार क्षेत्रहरु, खोला, खोल्सी, वन र अन्य धार्मिक क्षेत्रहरुको संचित्र तयार पार्नु भयो । सिलीचुवा चट्टानै चट्टानले बनेको पवित्र पर्वत उहाँहरुको रहेछ । त्यसैगरी सहभागीहरुले कुन क्षेत्रबाट साल्पा पोखरी जाने, गोरेटो र मूलबाटो आदि छलफल गर्दै रेखाङ्कन गर्नु भयो । त्यसरी नै अर्को समूहगत छलफलमा साल्पा पोखरीसंग सम्बन्धित अंकित ऐतिहासिक चिन्ह, शिकार खेल्ने क्षेत्र, पूजा गर्ने थलो, ढुङ्गा, जङ्गल, ऐतिहासिक सत्य तथ्य घटना, जनविश्वास बारे छलफलका सहभागीहरु लगायत गाउँघरमा रहनु भएका महिला, पुरुष, पुर्खा, धामी, झाँक्री, नुवागिरे, पुरेत, पण्डित आदिलाई जानकारी मागिएको थियो । समूहगत छलफलबाट जात, जनजाति, आदिबासीहरुको साल्पा पोखरीसंग धार्मिक, साँस्कृतिक निकटता छ भनी एउटा चार्ट तयार पारियो । यस चाँट अर्न्तगत २२% किराँत, १७% दलित, १४% ब्राह्मण, क्षेत्री र शेर्पा, १०% किरात र लिम्बु, ८% मगर र ७% गुरुङ्ग को पवित्र साल्पा पोखरी सीमसारको पारिस्थितीक प्रणालीसंग गहिरो सम्बन्ध रहेको पाईयो ।

> **"२०५२ साल सम्म सेतो रङ्ग भएको हाँस साल्पा पोखरीमा देखिन्थ्यो तर आजभोली देखिन छाडेको छ, कसैलै मारिदियो कि या त मासिएर लोप भएर नआएको होला ।"**
>
> *(समुदाय)*

> **"साल्पा परिशरमा कसैले फोहरमैला गरेमा वा जहाँतहीँ दिशा पिसाव गरेमा नराम्रो गरी आकाश गर्जने, हावा बतास लाग्ने, पानी, असिना पर्ने, बज्र पर्ने जस्ता वातावरणीय परिवर्तन हुन्छ ।"**

> **"हामी छिमेकमा साल्पा पोखरीमा मागी ल्याएको छोराको अहिले छोरा छोरी स्वस्थिलो रहेको छ र समय समयमा साल्पा पोखरीमा उक्त नानीहरुलाई लगिने गरिन्छ ।"**
>
> *(भोजपुर फेदीमा रहेको गाउँलेहरु)*

"साल्पा पोखरीमा एक्ले जानु हुन्न एक्लै गएको समयमा पोखरीको पानी एक्कासी माथि उठेर आउने, कहिलेकाँही पानी बग्दै गरेको आवाज त कहिले काँही डरलाग्दो आवाज आउने गर्दछ । म आफैले धेरैपल्ट पशु गोठ लगेर गएको समयमा सुनेको छु ।"

*(छलफलका एक अनुभवी)*



साल्पा पोखरी र यसाका वरिपरी रहेका अन्य सीमसार क्षेत्रहरु, खोला, खोल्सी, वन र अन्य धार्मिक क्षेत्रहरुको रेखाङ्कन चित्र

“हामी सबैले ऋषितर्पणी पूर्णिमाको समयमा साल्पा पोखरीमा दुध चामल, खिर चढाउने चलन छ । त्यस समयमा पोखरी नै सेतो भएको देखिन्छ । त्यस समयमा नाग आएर उक्त हामीले चढाएको कुराहरु खाएको जस्तो देखिन्छ । त्यसैले पनि पोखरीमा नाग छ भनी विश्वास गरिन्छ ।”

*(पशुपालकहरु)*




साल्पा पोखरी जाने गोरेटो र मूलबाटोको रेखाङ्कन चित्र

ठिक त्यसैगरी स्थलगत अध्ययनको क्रममा बेस्सरी असिना, पानी, हुरी, बतास परी मौसम परिवर्तनको क्षण प्रत्यक्ष देखियो । स्थलगत अध्ययन समुहमा सहभागी हुनु भएका सदस्यहरु बीच छलफल गर्दै र स्थलगत भ्रमण गर्दा परेको असिना पानी नियाल्दै जाँदा पुर्खाहरुको अनुभव अनुरुप नै साल्पा पोखरीले फोहर गरेकै कारण मौसम परिवर्तन को स्वभाव देखाएको होला भनी तथ्य निकालिएको थियो ।

गाउँलेहरुको विभिन्न अनुभवले उनीहरुको जीवनका धार्मिक, साँस्कृतिक मूल्य मान्यताहरुको साल्पा पोखरीसंग गहिरो सम्बन्ध रहेको प्रष्ट हुन आउँछ । साल्पा पोखरीमा बर्षको चार पल्ट धार्मिक तथा साँस्कृतिक मेला मनाईने परम्परा रहेछ । बैशाख अथवा चण्डी पूर्णिमा, भदौ अथवा ऋषि पूर्णिमा, कार्तिक पूर्णिमा र मंसिर महिनामा पर्ने पूर्णिमामा भब्यताका साथ मेला लाग्ने रहेछ । साल्पा पोखरी आउँदा सै-रानी सै-सै-राजा-सै-सै भन्ने धार्मिक गीत गाउँदै नाच्ने चलन रहेछ ।



**"हिउँदको समयमा हिउँ जम्ने, हिउँ टेक्दै पोखेरी माथि हिड्न पनि सकिने हुन्छ, साल्पा पोखरीमा जमेको हिउँ कुनै बेलामा प्वाल पर्ने र ठूलो आवाज आउने गर्दछ ।"**

*(एक सहभागी)*

**"साल्पा पोखरीमा पानी बाहिर जान दुईवटा बाटो छ । ती मध्ये कुनै बेला एक सुक्ने गर्दछ त कुनै समयमा अर्को । जुन पानी जाने निकास सुक्न गएको छ, त्यस दिशा तर्फको गाउँमा अनिकाल पर्ने, अन्नबाली राम्रो नहुने, पशुपालन राम्रो नहुने, समाजमा बिरामी पर्ने हुन्छ भन्ने विश्वास छ ।"**

**"साल्पा पोखरी समुदायहरुको भाग्यफल छुट्टाउने प्रतिकको आस्थाको विन्दु रहेको छ ।"**

आफ्नो परिवारमा छोरा छोरीको जन्म भएन भने बाँसको चोयले नानी सुताउने कोक्रो बुनी साल्पामा गई माग्ने चलन भएको किराँत सोताङ्ग र कुलुङ्गहरुले बताउनु हुन्छ ।

**"मौसम अनुसार फलेको फलफूल, अन्नपात हाम्रो ऐतिहासिक साल्पा रानी राजालाई देखाई उहाँहरुलाई खुवाएर मात्र खानु पर्ने हुन्छ । त्यसरी नै अर्को वर्षको बालीको लागि राम्रो मौसम माग्नका निमित्त हामी आउँछौं ।"**

“हाम्रो समाजमा छोरा छोरी नहुने परिवारजनले कोक्रो बुनी यो सालमा हामी कोक्रो लिई आयौं, सै–रानी सै–सै राजा सै–सै अर्को सालमा धोक्रे छोरा लिएर आउने छौं सै–रानी–सै–सै, सै–राजा सै–सै भन्दै साल्पा पोखरी, सीलीचोङ, परिक्रमा गर्दै छोरा छोरी माग्ने हाम्रो पुख्यौंली धार्मिक परम्परा साल्पा पोखरीसंग सम्बन्धित रही आएकोछ । त्यसरी नै हाम्रो गाउँमा सन्तान नभएको धेरैजनाको सन्तान भई राम्रो घर परिवार चलिरहेको छ ।”



साल्पा फेदी, दोभाने – भोजपुरको सामाजिक सचित्र





## किराँत, मगर समुदाय

किराँत, मगर समुदायको खड्का बहादुर खपाङ्गी मगर ६३ बर्षको हुनुहुन्छ । हाल उहाँ खाँदबारी मानेभन्ज्याङ्ग संखुवासभामा बस्नु हुन्छ । उहाँको पुर्खाहरु साल्पा पोखरी देखि नजिकै सोलु जिल्लामा थिए ।



**"आफ्नो पुर्खाहरुको मृत्यु पश्चात गाउँ घरका जाली फटाहहरुले मेरो सबै पुर्ख्यौली सम्पत्ति लुटिदिए । रातको १२ बजे गाउँ छाडें । अरुण खोलामा डुङ्गा तर्नु पर्थ्यो तर आफुसंग एक पैसा पनि नभएको हुँदा डुङ्गा चलाउने बोटेलाई सम्झाई बुझाई गरेपछि म, मेरो छोरा-छोरी र श्रीमतीलाई उसले अरुण नदी तारी दियो । त्यसपछि यस ठाउँमा आएँ, अर्काको खेती कमाएँ, बिदेशीहरुको भारी बोक्न गएँ, सधैं साल्पा रानी राजालाई मनमा सम्झना लिई राखें, हालमा सानो झोपडी बनाएको छु ।"**



**"विदेशीहरुसंग हिंड्दा धेरै पोखरीहरु देखेको छु । कति त अचम्म खालको पनि छ । म तीन-पाँच बर्षको अन्तरालमा सबै घर परिवार लिएर साल्पा पोखरीमा जाने गर्दछु । हामी सधैं विहान-साँझमा साल्पा रानी, साल्पा राजाको पूजाआजा गर्दछौं र हामीलाई शितल होस्, हाम्रो अन्नबाली राम्रो होस्, खान लगाउन दुःख नहोस् र तपाईहरुलाई त्यहाँ सुख शान्ति होस् भनी प्रार्थना गर्दछौं । म सपनामा साल्पा पोखरी वरिपरी रहेको देवदेवी, देवताहरु देख्छु र कुराकानी मुनधुममा गर्न सक्छु ।"**

## किराँत सोताङ राई समुदाय

फेदी गा.वि.स. भोजपुर निवासी किराँत सोताङ राई समुदायहरुको धामी झाँक्री समूहलाई उक्त अध्ययन अनुसन्धानको निमित्त अनुरोध गरिएको थियो ।





**"हाम्रो साल्पा जाने तिथी मिति अनुसार साल्पा पोखरी जानु अघि घरका मुख्य व्यक्ति अथवा आफ्नो बोली मिल्ने पुजारी (नुवागिरे/नाछोङ्) ले घरका कुल देवतालाई मान मनितो गर्ने र साल्पा जाने बारेमा आफ्नो धार्मिक भाषा (मुन्धम) मा वर्णन गर्नु पर्ने हुन्छ । घरको कुल देवता आदिसंग बल बरदान माग्ने कार्यसंगसगै, ढोलेहरु घुरीङ्गका लौराको सहायताले घरको आँगनमा ढ्याङग्रो बजाउन थाल्छन् र मृगको सिङ्ले थाल बजाउन थाल्छन् । धामी, बिजुवा, झाँक्री, नुवागिरले घरको कुलदेवता पुकार्ने काम सकेपछि आँगनमा आई वरिपरीको देवदेवी जस्तै बन, पानी देवता, सिमे, भुमे, ढुङ्गा, वायु आदिलाई सम्बोधन गर्दै ढ्याङग्रो बजाउँदै आफ्नो देवी देवतालाई बोलाउनु पर्ने हुन्छ । अब हामी यतिजना साल्पा पोखरी यस कार्यको निमित्त जाँदैछौं, घरको कुलदेवता वरिपरीको देव देवता, तपाईहरुले हामीलाई वर दिनु, वरदान दिनु, बाटोमा सबैको रक्षा गरिदिनु, घरमा बसेकाहरुलाई रक्षा गर्नु, पशुपंक्षीहरुको रक्षा गरिदिनु, गल्ती, भूल भएमा क्षमा दिनु भन्दै, नाच्दै सबैजना अघि जाने आज्ञा लिई हिड्ने चलन छ ।"**

दैव शक्ति र आफनो पितृ, देव देवतामा विश्वास राख्ने किरात समुदायहरुको यो परम्पराले आफ्नो वरिपरीको प्रकृतिसंग असाध्यै गहन सम्बन्ध रहेको भन्ने तथ्य पुष्टि गर्दछ ।

यो समुदायको परम्परागत रितिरिवाजले प्रकृति संरक्षणमा रचनात्मक भूमिका खेलेको रहेछ भन्ने कुराको बोध हुन्छ । पंक्तिबद्ध रुपमा तयार हुदैं सै रानी सै-सै, सै राजा सै-सै भन्ने साल्पा गीत गाउँदै, नाच्दै, साल्पा पोखरी जाने बाटो लाग्नु पर्ने र संगसंगै झाँक्री, आफ्नो देव देवता र वरिपरीका दैवी शक्तिहरुलाई फलाक्दै अघि बढ्ने परम्परा रहेछ ।

### एक किराँती झाँक्री यही सन्दर्भमा भन्नु हुन्छ

**"हामीले हाम्रो झाँक्री, धामी वा नुवागिरेलाई दुम्सीको वाण, वन कुखुरा (लुईचे), सिम कुखुरा, कालिज र अन्य चराहरुको रंगीन प्वाँख, त्यसमा सुनाखरी (साम्पाङ् जातिको मातृभाषामा आम्लाबुङ्) को चोयाले बुनेको टोपी, रुद्राक्षको माला, घण्टी, फलामको खुर्मी, घुङरीङ्को फुर्का भएको एकजोडी पासो खेलाउने डन्ठी बनाई दिनु पर्दछ । हाम्रो समाजमा घुङरीङ् रुद्राक्षको दाना, सुनाखरी, अदुवा, चिन्डो, लुईचे, डाँफेको प्वाँख, दुम्सीको वाण नभए त पूजाआजा नै हुन सक्तैन । त्यसैले हामीलाई आवश्यक पर्ने कुराहरु हाम्रा बारीमा जगेर्ना गर्ने गर्दछौं ।"**

हातमा एक जोडी घुङरीङ्गको दुबै पट्टि फर्काइ बनाइएको डण्डीको खुर्मी दैवी शक्तिसंग कुराकानी गर्दा उपयोग हुने धार्मिक सामासर्दम आफ्नी छोरीका साथ झाँक्री नुवागिरे साल्पा पोखरीको पूजाआजा गर्न जाँदा भन्नुहुन्छ

> **"आफ्नो गच्छे अनुसार अथवा गाउँघरमा परम्परागत भै आएको अन्न, बन्यजन्तु, फलफूल र जिउँदो परेवा साल्पा रानी, साल्पा राजाको नाममा चढाउन लैजाने हाम्रो धार्मिक रितिरिवाज पूर्खाहरुले मानी आएको चलन हो ।"**

उहाँहरुले गर्वको साथमा पुर्खाहरुले देखाएको परम्परा समाजको लागि अनुपम र अनिवार्य रहेको भन्नु भयो । बालक, बुढापाका, युवक र महिलाहरु पनि सानो नानी कोक्रोमा लिएर पवित्र साल्पा पोखरीको दर्शन गर्न जाने परम्परा रहेछ ।

साल्पा पोखरी जाने क्रममा बीच बीच बाटोमा प्राकृतिक रुपले रहेका माटोको ढिस्कनो, ढुङ्गे ठाउँ, जलभूमि क्षेत्र पुगेपछि सोताङ्ग झाँक्री भन्नु हुन्छ -

> **"हाम्रो पुर्खाहरुको आयु वायुको रुपमा आएर बसेको हुँदा दैव शक्ति लगायत वरिपरी रहेको पानी, जङ्गल, ढुङ्गे, भिर, पाखा देव देवी, देवता, भूत प्रेत आदिलाई सम्मान गर्नु पर्ने, बल बरदान माग्नु पर्ने हाम्रो परम्परा छ । यस्तो क्षेत्रमा हाम्रा पुर्खाहरु बस्नु भएको, खेल्नु भएको, साल्पा पोखरी जाँदा हिडनु भएको, किराँत रानी र राजा हिंडेका कुराहरु हंसको रुपमा हामीसंग कुरा गर्न आउने हुनाले उनीहरुको सम्मानमा तपाईहरुको छोरा छोरी, नातानाती, बुहारी उनीहरुको जातिगत नामबाट परिचय गराउँदै बल बरदान माग्दै साल्पा जादैछौं भनी उनीहरुलाई मनाउनु पर्दछ ।"**













त्यस्तो ठाउँमा पुग्नासाथ सबैजना उत्सुकताका साथ साल्पा धार्मिक गीत लयबद्ध रुपमाा गाउँदै, ढेङ्ग्रो बजाउँदै र नाच्दै पुर्खाहरुकको सम्मान गर्दै बल बरदान माग्ने साँस्कृतिक परम्परा रहेछ । जङ्गलको बाटो पहाड हुदैं गाउँदै नाच्दै उकालो उक्लदैं एउटा झुप्रा, खाली पशुपालकको बर्खे गोठ आईपुग्यो र त्यो रात गोठमा बास बस्ने निर्कौल भयो । बास बस्ने ठाउँ पुग्दा सोताङ्ग झाँक्री फेरि भन्नु हुन्छ -



**"बास बस्ने तय भएपछि यस ठाउँ वरिपरी रहेको देवी देवता, जङ्गली दैवी शक्ति, पानी देवता, सिमे, भुमे, वायु देवता, ढुङ्गे देवता साथै आफनो देवताहरु र घरका कुल देवताहरुलाई हामी यस ठाउँमा बास बस्दै छौं भनि पूजा गर्नु पर्छ । साल्पा पोखरी जाँदै गरेको, रात पर्‍यो, साना नानीहरु, नानीका आमा, बृद्धा, पुर्खाहरु हुनुहुन्छ, हामी सबैको रक्षा गर्नुहोस, तपाईहरुको साथमा छौं भन्ने जस्ता कुराहरुको आज्ञा लिनु पर्ने धार्मिक चलन छ ।"**













दोश्रो दिनको सबेरै उठी सबैजना साल्पा गीत गाउँदै नाच्दै पवित्र धार्मिक पोखरी साल्पा पुग्दा रहेछन् । पुग्नासाथ सबैजनाले नाच्दै, ढेङग्रो, र थाल बजाउदै हर्षोल्लास वातावरणमा पोखरीको परिक्रमा गर्ने परम्परा रहेछ । यसरी साल्पा पोखरीसंग गहिरो माया प्रेम साथमा सधैं सम्झनाको झल्को आईराख्ने समुदायहरुको भावना र धार्मिक परम्परा अलौकिक रहेको छ ।











### झाँक्री भन्नुहुन्छ

**“हामी झाँक्रीहरु यहाँ आईपुग्नासाथ साल्पा राजा, रानीलाई पूजा गर्दछौं, त्यसपछि सबै देवदेवताको नाम लिएर सबैको पूजाआजा गर्ने गर्छौं, हाम्रा परिवार, ढोले र अन्य बिरामीहरुको सातो यस पोखरीमा आई बसेको हुन्छ । उनीहरुलाई देख्दछौ । कसको सातो अथवा आयु, कमजोर नजर हुनेहरुको दशा, ग्रह आदि पोखरीमा देखिन्छ । हामीलाई कस्को त्यस्तो छाया कुन देवदेवतासंग छ थाहा हुन्छ र फर्काई दिनको लागि साल्पा पोखरीसंग अनुरोध गर्दछौ । धेरै अनुरोधको बाबजूद साल्पा पोखरी खुशी भएपछि सातो छाडी दिने काम हुन्छ । उक्त सातोलाई आफ्नो बोलीमा बोलाउँदै, सम्झाउँदै घुङ्गरीङ्को फुर्कामा ल्याउनु पर्छ । उसलाई घरबाट लिएर आएको छिन्डोमा भएको जाँड वा रक्सीमा घुङ्गरीङ्कै सहायताले संरक्षण गर्नु पर्छ । निज व्यक्ति त्यही हुनुहुन्छ भने उक्त रक्सी वा जाँड खान दिए हुन्छ । घरमा भएको व्यक्तिको भए घरमा लगी खुवाउनु पर्ने हुन्छ । त्यसै गरी सबैजनाको सातो र भाग्य हेर्ने कार्य सकिएपछि पोखरीको फन्को लगाउँदै हामी झाँक्री, नुवागिरे आदिले यस्तो झाँक्री गर्ने शक्ति दिनु भएको धन्यवाद दिँदै हामीले गाउँघर समाजमा गरेको झाँक्री काम राम्रै भईरहेको छ । हामी तपाईको साथमा आई मागेको कुरा दिनु भो । सबैजना तपाईहरुसंग सन्तुष्ट, खुसी छन् भनि धन्यवाद दिन्छौं सै-राजा सै-सै, सै रानी सै-सै तपाईहरुकै आशिर्वादले नाबालक नानीहरु हाम्रो समाजमा सन्चै सुविस्तै छन् । उनीहरुलाई गाउँले महिलाहरुले तपाईहरुको दर्शनको लागि लिएर आएका छन् । ती आमाहरु आफ्नो बालबच्चा स्वस्थ्य रहन र असल बनाउने चाहना गर्दछन् । हामीसंग आएका ढोलेहरु राम्रो खेतीपाती, पुशपंक्षीहरुको राम्रो उत्पादनको ईच्छा राख्दै बर्षभरी दुःख गरी उब्जाएको अन्न बाली तपाईहरुलाई पहिला खुवाउन लिएर आएका छन् । अर्को बालीको लागि राम्रो हावापानी पठाई दिनको निम्ति तपाईहरुसंग बिन्ति बिसाएका छौं । आफुले चिताएको, गर्न खोजेको कुराहरु सफल हुदैं जाओस भन्दै परेवाको जोडी तपाईहरुको लागि चढाएका छौं । तपाईहरुको सुखमय वातावरण रहोस, अर्को साल यसरी नै अझ धेरै भएर तपाईहरुको सेवामा आउने छौं भन्दै अहिलेलाई विदा पाउँ सै-राजा सै-सै, सै रानी सै-सै भन्दै विदा हुने हाम्रो पुरानो चलन छ”**

## हिन्दु सँस्कार



हिन्दु सँस्कार सँस्कृति भएका समुदायहरुसंग पनि परम्परागत रुपमा साल्पा पोखरीसंग सम्बन्ध रहेको कुरा उनीहरुले बजाएको ढेङग्रोले बताउँदछ। उपरोक्त धामी झाँक्रीले केही चराहरुको प्वाँख आफ्नो टोपीमा राखेको थियो भने, किराँत झाँक्रीले जस्तो गरी दुम्सीको वाण, सुनाखरी फूलको चोयाले बुनेको टोपी भने लगाएको थिएन। रुद्राक्ष दानाको माला, घण्टी लगाएको **हिन्दू धामीहरु भन्छन्**

> "हामीहरु हाम्रो समाजमा भएको मानिसहरुको सातो साल्पा पोखरीमा आएको देखेपछि उक्त सातो साल्पा पोखरीसंग माग्न आउने गर्दछौं।"



त्यसै समूहको **एक सहयोगी भन्नु हुन्छ**

> "हाम्रो झाँक्रीहरुसंग निज व्यक्तिको सातो उहाँहरुको ढेङग्रोमा आउने र आफ्नो झाँक्री परम्परा बोलीले सम्मान गरी अरु देवदेवताहरुको पापबाट छुटाएर राम्रो तरिकाले जस्को सातो हो उसैलाई दिने झाँक्री परम्परा छ। पुस्तौं भईसक्यो गाउँघरमा यसै परम्परा अनुसार स्वास्थ्य उपचार भईरहेको छ।"

## शेर्पा सँस्कार



साल्पा पोखरीसंग **शेर्पा** समुदायहरुको पनि गहिरो सम्बन्ध रहेको हुँदोरहेछ। धार्मिक रुपले उहाँहरु बौद्धमार्गी भएपनि परम्परागत धामी/झाँक्री चलन शेर्पा समुदायमा रहेको तथ्य झाँक्री समुदायका एक **बुद्धिजिवीले यसरी सुनाए**

> "हामीलाई सपनामा झाँक्री हुनु पर्ने र सेवा गर्नु पर्ने ज्ञान पाएपछि साल्पा पोखरीमा बल बरदान माग्न आउनु पर्छ।"



शेर्पा, धामी-धमीनीले सुन्दर मयुरको प्वाँख भएको टोपी (फेटा) लगाउने परम्परागत सँस्कार रहेछ।



## दलित सँस्कार

परम्परागत धर्म र सँस्कार मानी आएका दलित झाँक्रीहरु आ-आफ्नो चलन अनुसार साल्पा पोखरीको पूजा गर्न आउने गर्दा रहेन्छ । एक **सहभागी** जिज्ञांसा राख्दा यसो भन्छन्,





> **"हामी बाजेको पालो देखिनै यस्तो झाँक्री गर्ने चलन बसी आएको र सालको एकपल्ट झाँक्रीले गरेको कार्य बारे साल्पा पोखरीलाई सुनाउन आउने गरेको साथै हाम्रो समाजमा कुनै दु:ख पीर नपरोस्, अन्नपानी, पैसाको दु:ख नपरोस्, झै-झगडा नहोस्, शान्ति होस भन्ने प्रार्थनाको लागि साल्पा पोखरी आउने हाम्रो परम्परा छ ।"**

घुङरीङ्गको एकजोडी डण्डी, चराहरुको प्वाँख, दुम्सीको वाण आदि सुनाखारी चोयाले बुनेको टोपी लगाएको दलित धामी साल्पा पोखरीसंग झाँक्री विद्या र शक्ति प्राप्ती गर्न र पूजा गर्न आउनु भएको परम्पराले साल्पा पोखरी विना समुदाय, सम्प्रदाय, धर्म परम्परा रहन नसक्ने सम्बन्ध प्रष्ट हुन्छ ।



## किराँत कुलुङ्ग सँस्कार

यो संस्कारमा छोरा छोरी जो पनि धामी झाँक्री हुन सक्दछन् । त्यस्तै साल्पा पोखरीमा किराँत, कुलुङ्ग समुदायबाट महिला झाँक्री आउनु भएको थियो ।



### एक वृद्धले धामी/झाँक्रीको बारेमा यसो भन्छन् -

> **"हामी किराँती समाजमा आमा धामी/झाँक्री भए छोरीले, बाबु भए छोराले बोकेर साल्पा पोखरी परिक्रमा गर्दै यस्तो झाँक्री ज्ञान दिनु भएकोमा धन्यवाद दिदैं मनमा राम्रो भावनाले चिताएको कुरा, योजना पुगोस भन्दै आफ्नो माता, पितालाई साल्पा पोखरी घुमाउने पुरानो धार्मिक, साँस्कृतिक परम्परा छ । धामी/झाँक्री चाहीं साल्पै राजा, साल्पै रानी सै-सै भन्दै देवदेवता बोलाउँदै आफ्नो बोलीले बताउनु पर्ने पराम्परा छ । छोरा छोरीले चामल, दुध र परेवाको जोडी साल्पा पोखरीको नाउँमा छाड्ने धार्मिक परम्परा छ ।"**



# किराँत नाछिरिङ्ग सँस्कार



खोटाङ्ग जिल्लाबाट किराँत नाछिरिङ्ग समुदायका झाँक्री रङ्गिबिरङ्गी चराहरुको प्वाँख शिरमा लगाई हातमा धार्मिक बोटबिरुवाको पातहरुले सजाइएको फिटाले लोहटा (कलश) लिएर सै साल्पै राजा सै-सै, सै साल्पै रानी सै-सै भन्दै नाच्दै आउने परम्परा रहेछ ।

**उक्त पंक्तिबद्ध रुपमा रहनु भएका एक सहभागीले यसरी भन्नु भयो –**

**"हाम्रो समाजमा धामी झाँक्रीले आफ्नो सहयोगीहरु (ढोले) ले बजाउँदै गरेको ढेङग्रोद्वारा आफ्नो देवदेवता, पितृहरुलाई पुकार गर्दै साल्पा पोखरीसंग वृतान्त गर्नु पर्ने हाम्रो धार्मिक परम्परा साल्पा पोखरीसंग रहेको छ । हाम्रो झाँक्रीहरु सबैजना पोखरीको छेउमा गई आयु बरदान माग्ने, कसैको कमजोर सातो पोखरीमा खसेको भए, आफ्नो बोलीले बोलाई, देवदेवतालाई सम्झाइ फिर्ता ल्याउने, बिरामी भएको व्यक्तिको नाम लिने गर्दछन् । त्यसरी झाँक्रीहरुले आफनो धार्मिक तरिकाले कार्यसिद्धि भएपछि साल्पा पोखरीलाई उक्त कार्यको लागि धन्यवाद दिदै अन्जानमा कुनै गल्ती भएमा क्षमादानको प्रार्थी गर्दै विदा हुने कार्य हाम्रै झाँक्रीद्वारा गरिने परम्परा छ ।"**

किराँत नाछिरीङ्गहरुको यस प्रथाले साल्पा पोखरीसंग उहाँहरुको परम्परागत धार्मिक र स्वास्थ्य उपचार गर्ने प्रचलन प्राचीनकाल देखि रहेको देखाउँछ । नाछिरीङ्ग झाँक्रीहरुको मौखिक व्याख्या, धामी, झाँक्रीको परम्परागत शैली, आफ्नै भाषामा सम्बोधन गर्नु पर्ने प्रचलन जीवनमा आईपर्ने सम्पूर्ण कुराहरु धार्मिक परम्पराको रुपमा आदिमकालदेखिनै वहाँहरुको साल्पा पोखरीसंग निकटतम सम्बन्ध रहेको हुन सक्ने जनाउँछ ।











## जैविक विविधता संरक्षण अवधारणा

पवित्र साल्पा पोखरी हिमाली वन र जैविक विविधता पाईने क्षेत्र भित्र रहेको हुनाले यस क्षेत्र वरिपरी हिमाली थार, हिमाली खरायो, हाब्रे, हिमाली सीमसार क्षेत्रमा पाईने उभयचर, सानो स्तनधारी वन्यजन्तुहरु बस्ने गर्दछन् । त्यसैगरी विभिन्न चराहरु जस्तै, हुचिल, लाटोकेसेरो, समय समयमा पानी हाँस, मौसम अनुसार फुल्ने फूलहरु जस्तै लालीगुँरास, चिमल, हिमाली जडीबुटीहरुको संसार साल्पा पोखरी परिसरमा पाईने कुरा स्थलगत अध्ययनमा सहभागीहरुले प्रत्यक्ष इगिंत गर्दै भन्नु भएको थियो । सहभागितामूलक छलफलमा साल्पा पोखरीको प्राकृतिक सन्जाल अति नै गहन तरिकाले फैलिएको कुरा थाहा भयो । जस्तै अरुण उपत्यकाको जैविक विविधता र निर्मल पानी को स्रोत आदि संरक्षणमा यस सन्जालले गहन भूमिका खेलेको हुनसक्छ भनी सहभागी स्थानीय बुद्धिजिवीहरुले तर्क पेश गर्नु भएको थियो । उहाँहरुको कथनलाई स्थलगत अध्ययनको क्रममा पाइएको दृश्यहरुले पनि पुष्टि गर्दछ कि साल्पा पोखरी परिसरको प्राकृतिक सन्जाल गहन छ । सहभागीहरुले तयार पारेको सचित्रमा देखाए अनुसार साली पावा (खोल्सी) साल्पा पोखरीबाट उत्पत्ति भएर भिन्न खोल्सा खोल्सी आदिसंग मिसिँदै दक्षिण दिशा तर्फ जाने गर्दछ जहाँ ग्रामीण समुदायहरुको लागि उपयुक्त प्रोटिनयुक्त माछा पाईन्छ । गाउँघरमा साना साना विद्यार्थीहरुलाई मनोरञ्जनको लागि प्रयोग हुने माछा मार्ने प्रविधि वातावरण सुहाँउदो रहेको कुरा गाउँलेहरु बताउँदछन् ।

यस प्रकारले समुदायहरुको ज्ञान, शिप, कला, भाषा, रितिरिवाज, परम्परा, धर्म, सँस्कार त्यहाँ भएका पानी, माछा, बोट बिरुवा आदिसंग सम्बन्ध रहेको हुँदोरहेछ भन्ने कुरा बुझाउँदछ । साल्पा पोखरी सबै समुदाय अथवा सम्प्रदायहरुको पवित्र धर्मस्थल हुनाले काटमार गर्न, शिकार खेल्न, धार्मिक रुपले अशुभ मानिने कुरा समुहगत छलफलको समयमा बुढापाकाहरुले बताउनु भएको थियो । स्थलगत अध्ययन गर्ने क्रममा साल्पा वरिपरी साना मझौला अन्य पोखरीहरु रहेको पाइयो । ती मध्ये कति त हिमाली जङ्गल फडानी हुनाले बर्षा

### किराँती गाउँलेहरु भन्छन्

**"त्यस प्रकारको माछाहरु धार्मिक रितिरिवाजमा चाहिने गर्दछ, यिनीहरु विना हाम्रो धर्मकर्म, पूजाआजा नै चल्दैन त्यसैले यस्तो कुराहरु हाम्रो लागि अति महत्वपूर्ण छ ।"**

**"साल्पा पोखरी परिसरमा पाईने विभिन्न जैविक तथा प्राकृतिक स्रोतहरु हामी आफ्नो प्रयोगको निमित्त संकलन गर्दछौं । जस्तै घरेलु स्वास्थ्य उपचारमा प्रयोग हुने बोट बिरुवा, जङ्गली तरकारी, घरेलु मर्चा बनाउने पदार्थ आदि ल्याउँछौं । मर्चा बनाउने हाम्रो परम्परागत प्रविधि हो । यसबाट हाम्रो रितिरिवाजमा चाहिने जाँड रक्सी बनाउने प्रचलन आधुनिक समाजबाट हराउन लागेको अवस्था छ ।"**

याममा आएको पानीको कारण माटो थुप्रिन गई पुरिन लागेको अवस्थामा छ भने कुनै पशुपालकहरुले पशुहरु असन्तुलन तरिकाले चरण गर्नाले र मौसम परिवर्तनको प्रभावको कारण हराउने अवस्थामा छन् । कुनैकुनै ठाउँमा आगलागी भएको हिमाली जङ्गलहरु पाईयो । सहभागीहरुले बताए अनुसार प्रत्येक वर्ष साल्पा पोखरीमा आउने भक्तजनहरु बढ्दो छ । त्यसै अनुसार स्थायी रुपमा बस्न बनाईने पसल, चिया पसलहरुपनि त्यसै अनुपातमा बढ्दै गईरहेको अवस्था छ । उनीहरुलाई चाहिने दाउरा साल्पा पोखरी वरिपरी अवस्थित जङ्गलबाट लिने हो भने बन मासिएर जान धेरै समय लाग्ने छैन । भक्तालुहरु साल्पा पोखरी भित्र नै पसेर नुहाउने गरिदिनाले पवित्र निर्मल पानी मानिसकै कारण फोहर बन्न जाने हुँदा बुद्धिमतापूर्ण प्रयोग बारे जनचेतना र संरक्षण शिक्षाको आवश्यक महसुस गरिएको छ । उच्च पहाडी विकास परियोजना (TMI) द्वारा स्थापित साल्पा संरक्षण समूहका सदस्यहरु प्रत्येक वर्ष साल्पा पोखरीमा लाग्ने गरेको धार्मिक मेलामा सम्झाई बुझाई गर्ने, सफा गर्ने, वृक्षारोपण गर्ने क्रियाकलाप गरी राख्नु भएको रहेछ । जनचेतना र संरक्षण शिक्षाको अभाव ज्यादै रहेको कुरा भने उक्त समूहका अध्यक्ष भन्नु हुन्छ ।

पवित्र साल्पा पोखरी मौलिक परम्परा अनुसार उच्च स्थान (साली-पाः) - सिलिचुवा पवर्तको काखमा रहेको धर्म तीर्थस्थलको रुपमा रहेको छ र विभिन्न क्षेत्रबाट भक्तजनहरु आ-आफ्नो मनोकांक्षा पुरा हुने विश्वास लिएर आउने परम्पराले यस पोखरीको महत्व जनाउँदछ । परम्परा देखि चलिआएको जनजातिय प्रचलनहरु नै हाम्रा सिमसार क्षेत्रहरुको सर्म्बधन र प्रर्बधनका आधारशिला हुन् र यही अनुपम सामुदायिक विश्वास र प्रयासले नै दिर्घकालिन संरक्षण सुनिश्चित गर्न सक्छ ।














WWF Nepal acknowledges with gratitude the support received for the Freshwater Program from all our partners, donors and supporters:
Government of Nepal; Ministry of Forests and Soil Conservation (MFSC); Department of National Parks and Wildlife Conservation (DNPWC); Department of Forests (DoF); Department of Plant Resources; Water and Energy Commission Secretariat (WECS); WWF International; WWF UK; WWF US; WWF Netherlands; WWF Finland; WWF Sweden; Swedish International Development Cooperation Agency (SIDA); International Water Management Institute (IWMI); and Community Based Organizations



२०२९ सालमा नेपालले राष्ट्रिय निकुन्ज तथा वन्यजन्तु संरक्षण ऐनको निर्माण गरेर वन्यजन्तु संरक्षणको आधुनिक युगमा प्रवेश गरेको थियो । राष्ट्रिय निकुन्ज तथा वन्यजन्तु संरक्षण विभागको ९ वटा राष्ट्रिय निकुन्ज, ३ वटा वन्यजन्तु आरक्ष, ३ वटा संरक्षण क्षेत्र र १ वटा शिकार आरक्ष लगायत ९ वटा मध्यवर्ती क्षेत्रको सञ्जाल रहेको छ । यी सबै गरेर नेपालको कूल भू-भागको १९.४ प्रतिशत अर्थात २८,५८५.६७ वर्ग कि.मि. क्षेत्रफल ओगटेको छ ।

राष्ट्रिय निकुन्ज तथा वन्यजन्तु संरक्षण विभागको प्रमुख उद्देश्यहरुमा नेपालका बहुमूल्य तथा विभिन्न वन्यजन्तु तथा वनस्पति तथा भू-दृश्यको संरक्षण, सुरक्षा एवं पुर्नोत्थान गर्नु रहेको छ ।

सन् १९८७ मा नेपाल रामसार महासन्धीको सदस्य राष्ट्र भएको थियो । राष्ट्रिय निकुन्ज तथा वन्यजन्तु संरक्षण विभाग यस महासन्धीको नेपाल कार्यान्वयन गर्ने प्रमुख निकायको रुपमा रहेको छ ।

डब्लु डब्लु एफ विश्वको ठूलो तथा अनुभवी स्वतन्त्र संरक्षणमूलक संस्था हो । लगभग ५० लाख सहयोगीहरु र ९० राष्ट्रमा फैलिएको सञ्जाल यसमा क्रियाशील रहेको छन् ।

डब्लु डब्लु एफ को लक्ष्य विश्वको प्राकृतिक वातावरणलाई ह्रास हुनबाट जोगाई तल उल्लिखित कार्यहरुमार्फत मानिस र प्रकृति बीच सामञ्जस्य रहने भविष्यको निर्माण गर्ने ध्येय राख्दछ :

- विश्वको प्राकृतिक विविधता जगेर्ना गरेर
- पुनः प्रयोजनमा आउने प्राकृतिक स्रोतको दिगोपनलाई सुनिश्चित गरेर
- प्रदुषण र अपव्ययी उपभोग न्यून गर्ने कुरा प्रवर्द्धन गरेर ।


**राष्ट्रिय निकुञ्ज तथा वन्यजन्तु संरक्षण विभाग**
पो.ब.नं. ८६०, बबरमहल, काठमाडौं, नेपाल
फोनः ९७७-१-४२२०८५०, ४२२०९१२, ४२२७९२६
फ्याक्सः ९७७-१-४२२६६७५
ई-मेलः dnpwc@bdcin.wlink.com.np
वेबसाइटः www.dnpwc.gov.np

**डब्लु डब्लु एफ नेपाल**
**स्वच्छ जलसम्पदा कार्यक्रम**
पो.ब.नं. ७६६०, बालुवाटार, काठमाडौं, नेपाल
फोनः ९७७-१-४४३४८२०, ४४३४९७०, ४४१०९४२
फ्याक्सः ९७७-१-४४३८४५८
ई-मेलः info@wwfnepal.org
वेबसाइटः www.wwfnepal.org
www.panda.org/freshwater